# जन्मदा नै नवजात शिशुको शारिरिक विचलन पत्तालगाउने

CBM is one of the world's largest international disability and development organisations, committed to improving the quality of life of persons with disabilities in the poorest countries of the world. Based on its Christian values and over 100 years of professional expertise, CBM addresses poverty as a cause and a consequence of disability, and works in partnership to create a society for all.

# जन्मदा नै नवजात शिशुमा देखिने शारिरिक विचलन

- जन्मदा नै देखिने शारिरिक विचलन संसारका सबै ठाउँका नवजात शिशुहरूमा पाईन्छ।
- यस्तो खालको विचलन प्राय भ्रुण अवस्थामा नै भएको हुन्छ।
- नवजात शिशुहरूमा देखिने यस्तो शारिरिक विचलन भूतप्रेत वा पूर्व जन्मको पापले हुने होईन।
- मद्यपान, धुम्रपान तथा गलत औषधि प्रयोगको स्थितिमा बाहेक आमाको गल्तीको कारणले हुने होईन। (आमाले गल्ती नै गरेपनि यस्तो हुँदैन।)

# जन्मदा नै नवजात शिशुमा देखिने शारिरिक विचलन

ओंठ चिरिएको

क्लब फुट

जन्मजात मोतिविन्दु

# सेतो दुबी

- सेतो दुबी भएको बच्चाको छालामा अन्य रङ्ग देखिने विशेषता हुदैन, त्यसैले बच्चाको छाला सेतो देखिन्छ।
- बच्चाको कपाल पनि सेतो हुन्छ।
- यस्ता बालकहरूमा दृष्टिसम्बन्धी समस्या हुनसक्छ।
- सेतो दुबी भएका बच्चाहरूको आँखाको परिक्षण नियमित गर्नुपर्छ।
- सेतो दुबी भएका बालबालिकाहरूको छालालाई घामले सजिलै हानी पुऱ्याउँछ । त्यसैले यस्तो समस्या भएका बालबालिकाहरूलाई शरीर र टाउको छोप्ने गरी कपडा लागाईदिनुपर्छ
- सेतो दुबी भएका बालबालिकाहरूको सामान्य बच्चाहरूको जस्तै दिमागी क्षमता/प्रतिभा हुन्छ।

# टाउकोमा पानी जम्ने समस्या

- टाउको भित्र पानी जम्दै जाँदा टाउको ठूलो र नरम हुन्छ। बच्चाको टाउको ठूलो हुँदै गएको छ कि ?
- यस्ता बालबालिकाहरूको आँखा अस्ताउँदो घामको आकार जस्तो देखिनसक्छ।
- टाउकोमा जमेको पानी निकाल्न त्यस्तो बच्चालाई तुरुन्तै अस्पताल लैजानुपर्छ।
- दिमागमा हुने खतरा रोक्न टाउकोमा पानी जम्ने समस्याको तुरुन्तै उपचार गर्नुपर्छ।
- फिजियोथेरापीको लागि बच्चालाई पुनःस्थापना केन्द्रमा लैजानुपर्छ।

# ओठ चिरिएको, तालु फाटेको (Cleft Palate) र खानपिन

- ओठ चिरिने र तालुको समस्या देखिने प्रचलित विचलन हो ।
- ओठ चिरिने भनेको माथिल्लो ओठ नाकको तल्लो भागसम्म फाटिनु वा चिरिनु हो ।
- कहिले काँही ओठ राम्रो रहेर पनि मुखको माथिल्लो तालु चिरिएको हुनसक्छ ।
- हरेक नवजात शिशुको ओठ र मुखभित्रको तालु जाँच गर्नुपर्छ ।
- यसका लागि मुखमा हेर्ने र सफा औंलाले मुख भित्र छाम्ने गर्नुपर्छ ।
- यस्तो ओठ चिरिएको र तालुको समस्या भएकालाई शल्यक्रियाद्वारा उपचार गर्न सकिन्छ ।
- त्यसैले त्यस्ता बच्चाहरूलाई उपयुक्त ठाउँमा उपचारका लागि यथाशिघ्र लैजानुपर्दछ ।
- ओठ चिरिने र तालु फाटेको समस्या भएका बच्चाहरूलाई खानपीनमा समस्या हुन्छ ।
- आमाको दुध नै उत्तम आहार हो ।
- यस्ता बालबालिकाहरूलाई धेरै पटक खाना खुवाउनु पर्छ ।
- खाना खुवाउँदा बसाएर खुवाउनु पर्छ ।
- यदि बच्चालाई दुध चुस्न गाह्रो भए आमाको दुध निचोरेर चम्चाको सहायताले खुवाउनुपर्छ ।
- यस्ता बालबालिकाहरूले खाना सँगसँगै हावा पनि खाने हुँदा बेलाबेलामा डकार गराउनुपर्छ ।
- यदि आमाको दुध नपुग भएमा गाई भैसीको दुध खुवाउनुपर्छ ।

# ओठ चिरिएका र तालु फाटेका बालबालिकाहरू

अपरेशन गर्नु भन्दा अघि ओठ चिरिएको र तालु फाटेको

अपरेशन पछि।

ओठ चिरिने एकातिर वा दुबै तिर हुनसक्छ।

उपचार नगरिएको ओठ चिरिएको अवस्था।

# कुमको स्नायुमा हुने चोटपटक

- लामो ब्यथा लागेर बच्चा जन्माउन नसकेको अवस्थामा टाउको वा कुम/पाखुरा तानी बच्चा जन्माउँदा कुमको स्नायुहरूमा चोटपटक लाग्नसक्छ।
- घाँटी र पाखुराको बिचमा रहेको स्नायुहरू तन्केर पाखुराको आंशिक पक्षघात हुनसक्छ।
- यस्ता बच्चाहरूले पाखुरालाई एकतर्फ राखिरहन्छन् कुइनो सोझो राख्छन् र हातका औंलाहरू कसेर मुठी पार्छन्।
- बच्चालाई छुँदा, चलाउदा पनि अर्को हात जस्तो गरी उक्त पाखुरा चलाउँदैन।
- हात चाहि चल्न सक्छ।
- कहिले काँही केही दिन सम्म पाखुरा चलाउने बेलामा बच्चालाई दुख्छ।
- यस्तो समस्या आफै ठिक हुनसक्छ तर केही महिना लाग्न सक्छ। कहिले काँही यस्तो स्नायुमा लागेको चोटपटक पछि सम्म रहिरहनसक्छ।
- शारीरिक अभ्यास गराउनको लागि बच्चालाई फिजियोथेरापिष्टकोमा लानुहोस्।
- लामो सुत्केरी ब्यथा लागेर जन्मिएको कुनै पनि बच्चाको कुमको स्नायुहरूमा चोटपटक लाग्यो कि भनेर जाँच गर्नुपर्दछ।

# कुमको स्नायुमा चोटपटक लागेको बच्चा

बच्चालाई चलाउँदा कुमको स्नायुमा
चोट लागेको हात चलाउदैन ।

# मोतिविन्दु

- नवजात शिशुको आँखा जाँच्नुहोस् ।
- आँखाको नानी कालो देखिनुपर्छ ।
- आँखामा टर्चलाइटले हेर्नुहोस् ।
- यदि मोतिविन्दु रहेछ भने आँखाको नानी सेतो वा धमिलो देखिन्छ ।
- मोतिविन्दुले दृष्टिविहिन गराउन सक्छ ।
- मोतिविन्दु भएको बच्चालाई तुरन्तै आँखा अस्पताल लानुहोस् ।
- सानो अपरेशनले मोतिविन्दु निको हुनसक्छ ।

# मोतिविन्दु

यदि आँखा सेतो वा धमिलो देखिएमा
मोतिविन्दु हुनसक्छ ।

टर्चलाइटको सहयाताले
आँखा जाँच गर्नुहोस् ।

# औंलाहरूमा देखिने विचलन

- के औंलाहरूको संख्या ठीक छ ? कसै–कसैको औंलाको संख्या बढी हुन्छ, त्यस्तोलाई ‘पोलिड्याक्टीली’ भनिन्छ।
- के औंलाहरूको आकार सामान्य छ त ?
- कतै औंलाहरू र बुढीऔंला जोडिएका त छैनन् ? त्यस्तो अवस्थालाई ‘सीनड्याक्टीली’ भनिन्छ।
- यस्ता औंलाहरू र बुढीऔंलाहरूको विचलनले गम्भिर अपाङ्गता त सृजना गर्दैन तर यसले हिनतावोध गराउन सक्छ।
- यस्ता खालको विचलनलाई शल्यक्रियाद्वारा सुधार्न सकिन्छ।

# हातखुट्टाहरूमा हुने विचलन

- हातखुट्टा नभएको बच्चा जन्मिन सक्छ।
- हातखुट्टा छोटो वा विचलन हुनसक्छ।
- के बच्चाको हातखुट्टा राम्ररी चल्न सक्छ ?
- जोर्नीहरू नचल्ने भएका बच्चाहरू हुनसक्छन्। त्यस्तो अबस्थालाई 'अर्थोग्राइपोसीस' भनिन्छ।
- हातखुट्टामा यस्तो विचलन भएका बच्चाहरूलाई बिशेष पुनस्थापना केन्द्र मार्फत अवस्थामा सुधार ल्याउन सकिन्छ।

# हातखुट्टामा आउने विचलन

अर्थोग्राइपोसिस

# क्लबफुट (खुट्टा भित्रपट्टी बाङ्गिने)

- क्लबफुट समस्याको उपचार गर्न सकिन्छ।
- क्लबफुटलाई उपचार नगर्ने हो भने अपाङ्गतामा बृद्धि हुन्छ र बच्चाले खुट्टाको एक छेउबाट मात्र टेकेर हिड्न थाल्छ।
- क्लबफुट भएका बालबालिकाहरूलाई स्वास्थ्य संस्था वा पुनःस्थापना केन्द्रमा सकभर चाँडो लैजानुपर्दछ।
- सवैभन्दा नजिकको : क्लबफुट क्लिनिक..............दुरीमा छ।
- सानै उमेरमा प्लाष्टर लगाएर गरिने उपचारले खुट्टालाई सामान्य बनाउन सकिन्छ ।

# क्लबफुट (खुट्टा भित्रपट्टी बाङ्गिने)

क्लबफुट

क्लबफुटको प्लाष्टर लगएर उपचार गरिँदै

खुट्टालाई फट्याउने विशेष प्रकारको फलामे डण्डी राखी नियमित अनुगमन गरिँदै ।

उपचार नगरिएको क्लबफुट कडा प्रकारको विचलनमा गएको ।

# पुठ्ठा (फिला) को हड्डी खुस्किएको

- यस्तो अवस्थामा शिशुको पुठ्ठाको जोर्नी अस्थिर हुन्छ र खुट्टा चलाउने बितिक्कै खुस्किहाल्छ।
- तेर्सो परेर जन्मिएका शिशुहरूमा यस्तो समस्या बढी हुनसक्छ।
- यसलाई पत्ता लगाउन गाह्रो छ। खुट्टा छोटो देखिन सक्छ र अतिरिक्त रुपमा मासु र छाला खुम्चिएको (Crease) हुन्छ।
- पुठ्ठाको हड्डी खुस्किएको कुरा पत्ता लगाउन विशेष जाँच गर्नु आवश्यक हुन्छ।
- खुट्टालाई पुठ्ठासम्म पुग्ने गरी दोब्राउनुहोस् र खुट्टा छोटो छ छैन जाँच गर्नुहोस्।
- अनि खुट्टालाई विस्तारै दुवैतिर छोड्नुहोस्। पुठ्ठाको जोर्नीमा हड्डी बाहिर-भित्र सरेको अनुभव हुन्छ।
- पिठ्युमा बोक्ने गर्नाले यसरी खुस्किएको हड्डी सही ठाउँमा ल्याउन मद्धत गर्छ।

# पुठ्ठा (फिला) को हड्डी खुस्किएको

बायाँ खुट्टा अलि छोटो छ र
त्यहाँ अतिरिक्त छालामा खुम्चेको छ।

खुट्टालाई अगाडि–पछाडि चलाउदै गरेको अवस्था

घुडा समातेर दायाँ–बायाँ चलाएको अवस्था

दुवै खुट्टालाईसँगै राख्दा कुनै खुट्टा छोटो त छैन ?

# स्पाइनल बाइफिडा (ढाडमा जन्मजातै फोको आउने)

- शिशुको ढाड जाँच्नुहोस्। ढाडमा कुनै ठूलो फोका, घाउ वा रौं सहितको दाग छ भने त्यसलाई स्पाइनल बाइफिडा भनिन्छ।
- यो एउटा गम्भीर समस्या हो। भ्रुण अवस्थामा नै ढाडको संरचना राम्रोसँग तयार भएन भने यस्तो हुनसक्छ।
- यसले ढाडमा रहेको स्नायु प्रणालीमा असर पुऱ्याउन सक्छ जसले गर्दा खुट्टा नचल्ने हुनसक्छ।
- यस्ता शिशुहरूको टाउकोमा पानी जमेको पनि हुनसक्छ।
- संक्रमणको कारण यस्ता शिशुहरूको तुरुन्तै मृत्यु हुन पनि सक्छ।
- यसको उपचार धेरै गाह्रो छ।

# स्पाइनल बाइफिडा (ढाडमा जन्मजातै फोको आउने)

बच्चाको ढाडमा आएको फोको

# जनेन्द्रिय र गुदद्वारमा हुने समस्याहरू

- नवजात शिशुको जनेन्द्रिय (यौनाङ्ग) र गुदद्वार ध्यानपूर्वक जाँच्नुहोस्।
- के तिनीहरू सामान्य देखिन्छन् ?
- कसैको पेटमा नै पिसाब आउने प्वाल भई त्यहिँबाट पिसाब बाहिर आउन सक्छ :–
  यस्तोलाई 'ब्लाडर एक्सट्रोफी' (Bladder Extrophy) भनिन्छ।
- पिसाव नली लिङ्गको फेदतिर हुने अवस्थालाई 'हाइपोसपेडियस' भनिन्छ।
- यदि शिशुको अण्डकोष ठूलो देखिन्छ भने हर्निया वा हाइड्रोसील भएको हुनसक्छ।
  यस्तो अवस्थालाई अपरेशन गरेर ठीक पार्न सकिन्छ।
- हर्निया वा हाइड्रोसिल भएका बच्चालाई नजिकको अस्पताल लगिहाल्नुपर्दछ।
- शिशुको गुदद्वारबाट दिशा आएन भने गुदद्वार नखुलेको हुनुपर्छ।
  यस्तो अवस्थामा आपतकालीन शल्यक्रिया गर्नुपर्छ।
  यस्तो बच्चालाई तुरुन्तै ठूलो अस्पताल लगिहाल्नुपर्दछ।

# जनेन्द्रिय र गुदद्वारमा हुने समस्याहरु

पिसाव फेर्ने प्वाल पेटमा भएको

गुदद्वार नभएको

लिङ्गको फेदमा पिसाव मार्ग भएको

# शारिरिक विचलनका लागि नवजातशिशुको परिक्षण

१. नवजात शिशुको छालाको रंग, तापक्रम आदि हेर्नुपर्छ, के तिनीहरू सामान्य छन ?

२. के शिशुको टाउकोको आकार सामान्य छ ?

३. के घाँटी (गर्दन) राम्रोसँग चल्छ ।

४. के शिशुको आँखाको नानीमा सेतो वा बादल लागेको जस्तो देखिन्छ ? टर्चलाइटको प्रयोगरी हेर्नुहोस् ।

५. शिशुको मुख भित्र सफा औंला छिराई ओठ चिरिएको वा तालु फाटेको छ कि भनेर हेर्नुहोस् ।

६. के शिशुको हात खुट्टा वा जोर्नी राम्ररी चलिरहेछन् ? खुट्टा र हातका औंलाहरू ५/५ वटा छन् ?

७. के शिशुको हात खुट्टा दरा छन् ?

८. शिशुको ढाडमा कहीं घाऊ, दाग वा रौं पलाएको छ ?

९ . के शिशुको गुदद्वार वा पिसाव फेर्ने अङ्ग सामान्य छ ?

# जन्मदानै नवजात शिशुमा देखिने शारिरिक विचलन

## बिषयसूचि




This manual was produced in Tanzania by CCBRT and CBM with EU/CBM funding as a component of its joint programme with APDK, Kenya. This programme aims to reduce the prevalence of disabilities and mitigate the effects of impairments through improved maternal and newborn care and greater community awareness.


अन्तर्राष्ट्रिय गै.स.सं. संजाल अपाङ्गता कार्य समूह (AIN DWG), राष्ट्रिय अपाङ्ग महासंघ –नेपाल (NFDN), नेपाल स्वास्थ्य अनुसन्धान परिषद (NHRC) र विकलाङ्ग मित्र समूह/ अपाङ्ग बाल अस्पताल तथा पुनर्स्थापना केन्द्र (FOD/HRDC) सँगको सहकार्यमा अनुवादित अपाङ्गता–अध्ययन सामाग्री।